


# आगामी आर्थिक वर्ष २०७१/७२ को वार्षिक विकास कार्यक्रम र बजेट तथा आगामी तीन आर्थिक बर्ष (२०७१/७२-२०७३/७४) को मध्यमकालीन खर्च संरचना तर्जुमा सम्बन्धी मार्गदर्शन

## पृष्ठभूमि

आगामी आ.व. २०७१/७२ को बार्षिक विकास कार्यक्रम तर्जुमाका लागि निर्धारित वजेटको सीमा तथा मार्गदर्शनलाई मुख्य आधार बनाउनुपर्नेछ । आगामी आ.व. चालु तेह्रौं योजनाको दोस्रो बर्ष भएकोले यस बर्षका लागि वार्षिक विकास कार्यक्रमहरूको तर्जुमा गर्दा नेपाललाई अति कम विकसित राष्ट्रबाट विकासशील राष्ट्रमा स्तरोन्नति गर्ने तेह्रौं योजनाले अङ्गिकार गरेको दीर्घकालीन सोंच एवं त्यसको उद्देश्य, रणनीति र प्राथमिकतालाई मध्यनजर गर्नुपर्नेछ । यसरी वार्षिक विकास कार्यक्रमको प्रस्ताव गर्दा मध्यमकालीन खर्च संरचना पनि तर्जुमा गर्नुपर्ने भएकोले आगामी आ.ब. २०७१/७२ का साथै थप दुई आ.व. हरू २०७२/७३ र २०७३/७४ को लागि समेत बजेट तथा कार्यक्रमको प्रस्ताव गरी पठाउनु पर्नेछ । यसका लागि देहायका समष्टिगत तथा क्षेत्रगत मार्गदर्शनलाई ध्यानमा राख्नुपर्नेछ ।

## १. समष्टिगत मार्गदर्शन

### क. बजेट सीमा

१. दिइएको कुल बजेट सीमामध्ये नेपाल सरकारको स्रोततर्फको रकम अनिवार्य रूपमा तोकिएको सीमाभित्रै रहने गरी कार्यक्रमलाई प्राथमिकीकरण गरेर बजेट प्रस्ताव गर्ने ।

२. वैदेशिक सहायता सम्बन्धी सीमाको हकमा सो सीमाभन्दा कम मात्र वजेट परिचालन गर्न सकिने भएमा सोही अनुरूप गर्ने र वैदेशिक स्रोततर्फ दिइएको सीमाभन्दा बढी परिचालन गर्न सकिने वा थप वैदेशिक सहायता सम्झौता भएको भए सो समेत समावेश गरी कार्यक्रम प्रस्ताव गर्न सकिने ।

३. वैदेशिक स्रोत सीमा अन्तर्गत पूरै उपयोग नहुने अवस्थामा त्यसलाई नेपाल सरकारको स्रोतमा परिणत गरी वजेट प्रस्ताव गर्न नपाइने ।

### ख. कार्यक्रम तथा बजेट प्रस्ताव एवं प्राथमिकीकरण सम्बन्धमा

१. बजेट प्रस्ताव गर्नु अघि मन्त्रालय अन्तर्गतका सबै निकायहरूको कार्यक्रममाथि जिल्ला, क्षेत्र र मन्त्रालयस्तरमा पर्याप्त छलफल गर्ने र त्यसको वजेट कार्यतालिका अनुरूपको माइन्यूटसहित बजेट प्रस्ताव गर्ने ।

२. कार्यक्रम/आयोजनाको प्रस्ताव गर्दा अनुगमन तथा मूल्याङ्कन र प्रभावकारिता अध्ययन वा रिपोर्टिङ्ग गर्ने प्रयोजनका लागि रोजगारी सिर्जना, गरिवी निवारण, वातावरण र लैङ्गिक उत्तरदायी (प्रत्यक्ष, अप्रत्यक्ष र तटस्थ) जस्ता पक्षहरू प्रतिबिम्वित हुने गरी सूचकहरू तयार गर्ने ।

३. वजेट प्रस्ताव गर्दा Line Ministry Budgetary Information System (LMBIS) Software मा गर्ने र सोही अनुरूप Softcopy/ Hardcopy अर्थ मन्त्रालय र राष्ट्रिय योजना आयोगमा पठाउने ।

४. आयोजना प्रस्ताव गर्दा Logical Framework, Business Plan, Procurement Plan, Monitoring Plan समेत संलग्न गर्ने ।

५. कार्यालय सञ्चालन सम्वन्धी खर्च, अनुदान रकम, मन्त्रिपरिषद्वाट भएका नीतिगत निर्णय र अर्थ मन्त्रालयको सहमति वमोजिम सृजना भएका दायित्वहरू एवं परम्परागत रूपमा सरकारले व्यहोर्दै आएका प्रतिवद्ध खर्चहरू समेत दिइएको सीमाभित्र रही प्रस्ताव गर्ने ।

६. सम्भाव्यता अध्ययन नै नभएका र विस्तृत डिजाइनको काम पूरा नभएका कार्यक्रम/आयोजना प्रस्ताव नगर्ने ।

७. नयाँ स्थापना हुने कार्यालय वाहेकमा फर्निचर र सवारी साधन (गाडी+मोटरसाइकल) मा वजेट प्रस्ताव नगर्ने ।

८. प्रयोजन नखुलाई भैपरी खर्च शीर्षकमा वजेट प्रस्ताव नगर्ने ।

९. अत्यावश्यक र अनिवार्य वाहेक नेपाल सरकारको खर्चमा कुनै पनि वैदेशिक अध्ययन भ्रमण, अवलोकन, तालीम, सेमिनार आदिमा बजेट प्रस्ताव नगर्ने ।

१०. निक्षेपित कार्यक्रम अन्तर्गतको वजेट प्रस्ताव गर्दा राष्ट्रिय योजना आयोगवाट जिविसहरूलाई उपलब्ध गराइएको जिल्लास्तरीय बजेट सीमाको आधारमा जिल्लागत बाँडफाँड समेत प्रस्ताव गर्ने ।

११. नयाँ कार्यक्रम/आयोजनाको हकमा वैदेशिक सहयोग संलग्न भए सम्झौताको प्रतिलिपि राखी बजेट प्रस्ताव गर्ने । साथै वैदेशिक सहयोगमा संचालन हुने नयाँ आयोजनाको प्रस्ताव तयार गर्दा वैदेशिक सहायताको प्रभावकारिता सम्बन्धी पेरिस घोषणा २००५ को साथै आक्रा एजेण्डा, वुसान साझेदारी जस्ता प्रतिवद्धता अनुरूप कार्यक्रमहरू तयार गर्ने ।

१२. त्रि-बर्षीय खर्च प्रक्षेपणको सीमाभित्र रही आगामी तीन बर्षकै कार्यक्रम तथा बजेट प्रस्ताव गर्ने ।

१३. सरकारी खर्चको मितव्ययिता कायम गर्ने नीतिको पालना हुने गरी बजेट प्रस्ताव गर्ने ।

१४. नेपाल सरकारको पूर्ण स्वामित्वमा रहेका समिति, प्राधिकरण, आयोग सचिवालय जस्ता संस्थाहरूको वजेट प्रताव गर्दा अनुदानको रूपमा नभई खर्च शिर्षकगत रूपमा प्रस्तुत गर्ने ।

१५. नेपाल व्यापार एकिकृत रणनीति (NTIS) २०१० कार्यान्वयनको लागि आ-आफ्नो मन्त्रालयले गर्नुपर्ने गरी तोकिएका कार्यक्रमहरू तर्जुमा गरी वजेट सीमाभित्रबाटै कार्यक्रम प्रस्ताव गर्नुपर्नेछ ।

१६. धेरै आयोजनाहरूमा स्रोत छर्ने प्रवृत्तिलाई निरूत्साहित गरी आयोजनाहरूलाई प्राथमिकीकरण गर्ने र आगामी आ.व.मा सम्पन्न हुनें आयोजनाहरूलाई पुग्ने वजेट प्रस्ताव गरी वाँकी रकम मात्र अन्य आयोजनाहरूमा प्रस्ताव गर्ने ।

१७. वैदेशिक सहायतामा संचालित पूर्वाधार आयोजनाका लागि समपूरक कोषको रकम पर्याप्त हुने गरी राख्ने ।

१८. आयोजना कार्यान्वयन चरण पूर्वका कार्यहरू (जग्गा प्राप्ती, रेखाङ्कन तथा सीमाङ्कन) सम्पन्न नभएका कार्यक्रम प्रस्ताव नगर्ने ।

१९. **बजेट तर्जुमा दिग्दर्शन,** २०६८ मा उल्लेखित खर्चका मापदण्ड/प्राथमिकीकरणका आधारमा बजेट प्रस्ताव गर्ने ।

२०. कार्यक्रम/आयोजनाको प्राथमिकीकरण संकेत, गरिबी निवारण संकेत, रणनीतिक संकेत निर्धारण गर्दा **बजेट तर्जुमा दिग्दर्शन २०६८** मा उल्लेखित सूचकको आधारमा गर्ने । लैंगिक संकेत निर्धारण गर्दा **लैंगिक उत्तरदायी वजेट तर्जुमा दिग्दर्शन,** २०६९ मा उल्लेखित सूचकका आधारमा गर्ने । साथै, जलवायु परिवर्तन संकेत निर्धारण गर्दा **जलवायु परिवर्तन बजेट कोड सन्दर्भ पुस्तिका २०६९** को आधार र सूचकको आधारमा गर्ने ।

२१. सार्वजनिक निर्माण संहितालाई लैङ्गिक उत्तरदायी र Universal Access को अवधारणा अनुरूप Disability Responsive बनाउने ।

२२. आकस्मिक, प्राकृतिक प्रकोप तथा विपद्का घटनाहरु वाहेक थप वजेट मागका कुनै पनि अनुरोध स्वीकार नगरिने हुँदा सोही अनुरुप खर्च व्यवस्थापन हुने गरी वजेट प्रस्ताव गर्ने ।

२३. आफ्नो निकायसँग सम्बन्धित विषयमा नेपालकै विश्वविद्यालयहरुसंगको समन्वयमा अध्ययन अनुसन्धानका लागि पर्याप्त वजेट प्रस्ताव गर्ने ।

**ग. आयोजना/कार्यक्रम सम्बन्धमा**

१. तेह्रौं योजनाको दीर्घकालीन सोंच, सहस्राव्दी विकास लक्ष्य तथा सार्क विकास लक्ष्य, नेपाल पक्ष भएका महिला, वालवालिका, अपाङ्ग, आदिवासी जनजातिसँग सम्वन्धित तथा अन्य अन्तरराष्ट्रिय सन्धि सम्झौतामा उल्लेख भएका विषयमा राष्ट्रिय दायित्व पूरा गर्न सहयोग पुग्ने खालका कार्यक्रम प्राथमिकताका साथ समावेश गर्ने ।

२. नयाँ आयोजनाहरु प्रस्ताव गर्दा आर्थिक सामाजिक, प्राविधिक र वातावरणीय पक्षहरुमा पार्ने प्रभावलाई दीगो मुल्यांकन गर्दै उत्पादन वृद्धि, रोजगारी सिर्जना, लैङ्गिक उत्तरदायी, क्षेत्रीय सन्तुलन, समानता, समन्यायिकता र समावेशी सोंचको आधारमा गर्ने । त्यस्ता कार्यक्रम वा आयोजनाहरु समावेस गर्दा सम्भाव्यता अध्ययन, लाभ लागत विश्लेषण, श्रोतको पर्याप्त व्यवस्था र कार्यान्वयनको संस्थागत संरचना मिलाएर मात्र समावेस गर्ने । साथै, कार्यान्वयनमा रहेका आयोजनाहरु पुनरावलोकन गरी नतिजामूलक वनाउने ।

३. सञ्चालनमा रहेका कार्यक्रम/आयोजनाहरुको वजेट तयार गर्दा गत आ.व.को उपलब्धि, चालु आ.व.को प्रगति र उपलब्धि तथा आगामी आ.व. मा उक्त कार्यक्रम/आयोजनालाई निरन्तर सञ्चालन गर्नु पर्नाको कारण र त्यसवाट उपलब्धि के हुने हो सो समेत स्पष्ट रुपमा खुलाएर मात्र कार्यक्रम प्रस्ताव गर्ने ।

४. कार्यक्रम प्रस्ताव गर्दा क्रमागत कार्यक्रम/आयोजनाका हकमा हालसम्मको Cumulative Status झल्कने गरी विस्तृत विवरण समेत समावेश गरी प्रस्तुत गर्ने ।

५. आयोजना तर्जुमा प्रक्रियामा सम्वन्धित सरोकारवालाहरुको योगदान, खासगरी जनश्रम सहभागितालाई प्रोत्साहन गर्ने ।




६. चालु कार्यक्रम/आयोजनाहरुको औचित्य विश्लेषण गरी अनुत्पादक र प्रतिफल कम दिने आयोजनाहरु वा त्यस अन्तर्गतका कार्यहरु छनौट गरी खारेजी वा पुनरावलोकन गर्नुपर्ने देखिएमा सोही अनुसार सिफारिश गर्ने ।

७. विभिन्न क्षेत्र तथा वर्गहरुमा आर्थिक अवसरहरु प्रवर्द्धन गर्ने कार्यक्रमलाई महत्व दिने तथा बजेट तर्जुमा प्रक्रियामा महिला, दलित तथा पछाडि परेका वर्ग, प्रत्यक्ष/अप्रत्यक्ष रुपका द्वन्द पीडित र समुदायहरुको समेत संलग्नता गराउने ।

८. नयाँ वा चालु कार्यक्रम/आयोजनाहरुलाई पुनर्मूल्याङ्कन गरी गरिबी घटाउने, पुनर्स्थापन, पुननिर्माण, सामाजिक समावेशीकरण तथा लैङ्गिक उत्तरदायी तुल्याउने जस्ता उद्देश्यहरु पूर्ति गर्नमा सघाउने आयोजनाहरु समावेश गर्ने । नयाँ आयोजनाको प्रस्तावसँगै गाभ्ने र खारेज गर्न सकिने आयोजनाहरु उल्लेख गरी तिनीहरुको जनशक्ति र भौतिक सम्पत्तिको व्यबस्थापनबारे खाका पेश गर्ने ।

९. चालु कार्यक्रम/आयोजनाहरुलाई निरन्तरता दिँदा चालु आ.व. २०७०/७१ मा सो कार्यक्रम/आयोजनाहरुको कार्यसम्पादन सूचकलाई आधार मान्ने । साथै आ.व. २०७१/७२ मा पूरा हुने र पूरा गर्नुपर्ने आयोजनाहरुलाई विशेष रुपमा प्राथमिकता दिई पर्याप्त बजेट प्रस्ताव गर्ने ।

१०. सुदूरपश्चिम विकास आयोग र मध्यपश्चिम विकास आयोगसंग समन्वय गरी दुर्गम भेगका साथै कर्णाली क्षेत्र र कर्णाली वरिपरिका जिल्लाहरु तथा तराई मधेशका पछाडी परेका एवं सीमावर्ती क्षेत्रलाई विशेष प्राथमिकता दिई कार्यक्रम तयार गर्ने ।

११. विकास कार्यक्रम तर्जुमा गर्दा कार्यान्वयनको प्रक्रिया र संस्थागत व्यवस्था एवं कार्यान्वयन गर्ने निकाय (केन्द्र, जिल्ला, स्थानीय निकाय, सहकारी संघ संस्था, उपभोक्ता समूह, गैरसरकारी संस्थाहरु) बारे प्रष्टरुपमा उल्लेख गर्ने ।

१२. बैदेशिक सहायता र नेपाल सरकारको आफ्नै श्रोतबाट निर्माण हुने आयोजनाहरुमा मुआब्जा (Compensation/Right of way) आदि जस्ता कुरामा अन्तरद्वन्द हुन नदिन कार्यक्रम कार्यान्वयन गर्नु अगावै टुङ्गो लगाउने ।

१३. अन्तर क्षेत्रगत र अन्तर सम्बन्धित विषय (Cross Cutting and Inter-Sectoral Issue) समेतलाई ध्यानमा राखी आयोजनाहरुको कार्यान्वयनमा समन्वय गर्ने र दोहोरोपन हटाउने गरी कार्यक्रमहरु प्रस्ताव गर्ने ।

१४. कुनै कार्यक्रमको निश्चित भौगोलिक क्षेत्र भए सोलाई नक्सामै राखी प्रस्ताव गर्ने ।

१५. जिल्लास्तरमा सञ्चालन हुने कार्यक्रमहरुको तर्जुमा **स्थानीय स्वायत्त शासन ऐन २०५५** मा उल्लेख भए वमोजिम जनताले माग गरेका आयोजना वा कार्यक्रमलाई निश्चित योजना प्रक्रियाका माध्यमवाट सम्वोधन गर्न उचित हुने भएकोले जिल्लाभित्रका आयोजना वा कार्यक्रम सम्वन्धित जिल्ला विकास समितिको अगुवाईमा हुने १४ तहको सहभागितामूलक स्थानीय योजना प्रक्रियाको माध्यमवाट केन्द्रमा प्राप्त हुने व्यवस्था मिलाउने । साथै सोका लागि उपलव्ध हुने वजेट निर्धारित आधारहरुको अनुपातमा विनियोजन गर्ने व्यवस्था मिलाउने ।

१६. भविष्यमा सञ्चालनमा ल्याउनु पर्ने आयोजनाहरुको अध्ययन गरी आयोजना बैंकको विकास गर्ने उद्देश्य अनुरुप आ-आफ्नो मन्त्रालयसँग सम्बन्धित क्षेत्रका सम्भावित आयोजनाहरुको सम्भाव्यता अध्ययन गर्न बजेट सीमाभित्र रही कार्यक्रम प्रस्ताव गर्ने ।

१७. वहुबर्षीय ठेक्का प्रणालीमा सम्झौता गरिएका आयोजनाहरुको विवरण प्रत्येक वर्षको लागि चाहिने रकम सहित पेश गर्ने । आगामी आर्थिक वर्षमा नयाँ वहुबर्षीय प्रणालीमा जाने आयोजनाहरुको विवरण र वर्ष अनुसार आवश्यक रकम सहितको विवरण पेश गर्ने । साथै, दीर्घकालीन दायित्व सिर्जना हुने गरी एवं त्रिबर्षीय वजेट सीमा नाघ्ने गरी ठेक्का सम्झौता नगर्ने ।

१८. कार्यक्रम/आयोजनाको प्रस्ताव गर्दा कार्यसम्पादनमा आधारित (Performance based) प्रतिफल सूचकहरु सहित पेश गर्ने । प्रतिफल सूचकहरु मापन योग्य बनाउने ।

१९. कार्यक्रम/आयोजना प्रस्ताव गर्दा हरित अर्थतन्त्र तथा दिगो विकास (Green Economy and Sustainable Development) र गरिवी र वातावरण अन्तरसम्वन्धको अवधारणालाई अवलम्वन गर्ने ।

२०. कार्यक्रम/आयोजना प्रस्ताव गर्दा शान्ति संवेदनशील योजना (Peace Sensitive Plan) को अवधारणालाई आत्मसात् गर्ने ।

२१. राष्ट्रिय गौरवका आयोजनाहरुका लागि पर्याप्त वजेट प्रस्ताव गर्ने साथै यी आयोजनाहरुलाई समयमै पूरा गर्न प्राथमिकता दिने ।



२२. नयाँ संरचनाको विस्तारभन्दा निर्मित संरचनाहरुको स्तरोन्नति र व्यवस्थापनमा जोड दिने । साथै भौतिक संरचनाको नियमित र आवधिक मर्मत संभारका लागि आवश्यक बजेट प्रस्ताव गर्ने ।

२३. स्थानीय स्रोत र श्रममूलक प्रविधिमा आधारित एवं वातावरणमैत्री जलवायु परिवर्तन अनुकुलन र सहभागितामूलक पूर्वाधार विकासका माध्यमबाट स्थानीय तहमा रोजगारी सिर्जना मार्फत गरिबी निवारण तथा जनताको जीवनस्तर माथि उठाउनमा सघाउ पुऱ्याउने कार्यक्रम प्रस्ताव गर्ने ।

२४. स्थानीयस्तरमा कार्यक्रम सञ्चालन गर्न सरकारी, गैरसरकारी र सामुदायिक संस्था, उपभोक्ता समिति एवं सरोकारवाला संस्थाहरुको भूमिका स्पष्ट गर्दै समन्वयात्मक रुपमा कार्यक्रम सञ्चालन गर्ने । साथै निजी क्षेत्र, स्थानीय निकाय, समुदाय तथा अन्य सरोकारवालाहरुको सहभागितामा सीमान्तीकृत क्षेत्र र समुदायको विकास प्रक्रिया अगाडि बढाउने ।

२५. सीमावर्ती इलाकामा सडक यातायात, खानेपानी, सरसफाइ, विद्युत, टेलिफोन लगायतका सार्वजनिक पूर्वाधार विस्तारमा विशेष प्राथमिकता दिने ।

२६. क्षतिग्रस्त सरकारी भवन तथा अन्य भौतिक पूर्वाधार पुन:निर्माण गर्दा एउटै स्थानबाट विभिन्न सेवाहरु प्रदान गर्न सकिने हिसाबले पुन:निर्माण गर्ने नीति लिने ।

२७. शहरी पूर्वाधार सेवाका कार्यक्रम तर्जुमाका सन्दर्भमा सहलगानीको सम्भावनातर्फ समेत ध्यान दिने ।

## घ. मध्यमकालीन खर्च संरचना सम्बन्धमा

मध्यमकालीन खर्च संरचनाको तर्जुमा कार्य प्रभावकारी रुपमा निर्धारित समयभित्रै सम्पन्न गर्न निम्न कुराहरुलाई ध्यान दिने ।

१. **बजेट तर्जुमा दिग्दर्शन २०६८** मा उल्लेखित प्राथमिकताका आधारमा आयोजनाहरुको P1, P2, P3 प्राथमिकताक्रम निर्धारण गरी बजेट तथा कार्यक्रम तर्जुमा गर्ने ।

२. प्राथमिकताक्रमको आधारमा कार्यक्रम/आयोजनाहरुको औचित्य विश्लेषण गरी ती कार्यक्रम/आयोजनाहरु खारेज वा पुनरावलोकन गर्नुपर्ने भएमा सो अनुरुप सिफारिस गर्ने ।

३. कार्यक्रम/आयोजनाहरुको लागत/खर्च अनुमान गर्दा प्रति एकाई लागतको आधारमा तयार गर्ने । लागत/खर्चको अनुमान गर्दा अपनाइएका आधारहरु वस्तुगत र स्पष्ट हुने गरी खुलाउने ।

४. उपरोक्त वमोजिम प्राथमिकीकरण एवं लागत र खर्च अनुमानको आधारमा आगामी तीन आ.ब. (२०७१/७२-२०७३/७४) को कार्यक्रम तथा वजेट समावेश भएको MTEF Sectoral Paper तयार गर्ने । तीन बर्षको बजेट प्रक्षेपण र त्यसबाट प्राप्त हुने वार्षिक प्रतिफल पनि तयार गरी पेश गर्ने ।

५. आ.व. २०७२/७३ र २०७३/७४ को लागि वैदेशिक सहायताको रकम प्रक्षेपण गर्दा दातृ निकायहरुबाट विगतमा प्रतिवद्धता जनाइसकेको रकम बजेट सीमामा समावेश गरिएको र आगामी दिनमा सहायता रकममा उक्त सीमा भन्दा वृद्धि हुने गरी नयाँ सम्झौता भएमा सो सम्झौताको प्रति समेत संलग्न गरी सोको आधारमा कार्यक्रम प्रस्ताव गर्ने ।

६. मध्यमकालीन खर्च संरचनाको कार्यक्रम तथा वजेटको कार्यान्वयन अनुगमन र मूल्याङ्कन गर्ने व्यवस्थालाई संस्थागत गर्दै जाने ।

७. मध्यमकालीन खर्च संरचनाको विस्तृत विवरण अनुसूची १ मा संलग्न गरिएको ढाँचामा तयार पार्ने र वार्षिक विकास कार्यक्रम तथा वजेट माथिको छलफललाई यसै विवरणमा उल्लेखित सूचक तथा तिनको लक्ष्य प्राप्तिका रणनीतिहरुमा केन्द्रित गरिने ।

## ङ. कार्यान्वयन सम्बन्धमा

१. विकास कार्यक्रम/आयोजनाहरुका मुख्य मुख्य कार्यहरुको कार्यान्वयन योजना (Implementation Plan) तयार गरी कार्यक्रम/आयोजनाहरुको कार्यान्वयन गर्ने अनिवार्य व्यवस्था गर्ने ।

२. विकास कार्यक्रम/आयोजनाको कार्यान्वयन उपभोक्ता समिति वा अन्य कुनै वैकल्पिक तरिकाद्वारा गराइने र त्यसको निर्देशिका समेत कार्यक्रम तर्जुमाकै अवस्थामा तयार गर्ने ।

३. स्वीकृत बार्षिक विकास कार्यक्रम र खर्च गर्ने अख्तियारी सम्बन्धित मन्त्रालयले आर्थिक बर्ष शुरु भएको १५ दिनभित्र सम्बन्धित कार्यालयमा पठाउने व्यवस्था मिलाउने ।



४. बोलपत्रद्वारा कार्य गराउनु पर्ने अवस्थामा बोलपत्रको सूचना प्रथम चौमासिक अवधिभित्रै प्रकाशित गरिसक्ने गरी कार्यक्रम तर्जुमा गर्ने ।

५. कार्यस्थलदेखि जिल्ला तहसम्म हरेक आयोजनाको बजेट रकम, वार्षिक कार्यक्रम र प्रगति आवधिक रुपमा सार्वजनिक गर्ने व्यवस्था गर्ने ।

६. कार्यक्रम तर्जुमा गर्दा लैङ्गिक समानता र महिला सशक्तीकरण तथा सामाजिक समावेशीकरणका कार्यक्रमहरुलाई विशेष प्राथमिकता दिई समावेश गर्ने तथा ती कार्यक्रमहरुको विशेष अनुगमन गर्ने व्यवस्था मिलाउने ।

**च. अनुगमन तथा मूल्यांकन सम्बन्धमा**

१. विकास योजनाले राखेका राष्ट्रिय तथा बिषय क्षेत्रगत लक्ष्यहरु हासिल गर्नका लागि आयोजना कार्यान्वयन प्रक्रियालाई प्रभावकारी बनाउन सहयोग गर्ने र विकास नतिजा प्रति जवाफदेहिता प्रवर्द्धन गर्नेतर्फ अनुगमन तथा मूल्यांकनलाई केन्द्रित गर्ने ।

२. राष्ट्रिय गौरवका, पहिलो प्राथमिकता प्राप्त र विकासका साझेदारहरुको सहयोगमा सञ्चालित कार्यक्रम/आयोजनाहरुबाट समयमैं अपेक्षित नतिजा हासिल गर्न सहयोग पुऱ्याउनका निमित्त राष्ट्रिय योजना आयोगबाट लागू भएको राष्ट्रिय अनुगमन तथा मूल्याङ्कन दिग्दर्शन २०७० को अनुशरण गर्ने र समग्र अनुगमन तथा मूल्यांकनलाई नतिजामुखी बनाउने ।

३. अनुगमन तथा मूल्यांकन संबन्धी आफ्नो मन्त्रालय बा मातहतका विभाग/निर्देशनालय/कार्यालयहरुको क्षमता अभिबृद्धि गर्न अनुगमन तथा मूल्यांकन कार्ययोजना तयार गरी कार्यान्वयन गर्ने । मातहतका निकायहरुलाई पनि यस्ता कार्ययोजना तयार गरी कार्यान्वयन गर्न प्रेरित गर्ने ।

४. अनुगमन तथा मूल्यांकन कार्ययोजनाको कार्यान्वयन गर्न आवश्यक छुट्टै वजेटको प्रस्ताब गर्ने र यस प्रयोजनका लागि बिनियोजित बजेट अन्यत्र खर्च नगर्ने । आयोजनाहरुको स्थलगत निरिक्षण गर्दा बिभिन्न निकाय र क्षमता भएका व्यक्तिहरु समेत समावेश गरी समूहमा गर्ने र निरिक्षण प्रतिबेदन अनिवार्य रुपमा सम्बद्ध निकायको Website मा राख्ने एवं सार्वजनिक गर्ने व्यवस्था मिलाउने ।

५. स्थानीयस्तरमा सञ्चालन भएका आयोजना/कार्यक्रमहरुको अनुगमन र विश्लेषण जिल्ला योजना, अनुगमन तथा विश्लेषण प्रणाली (DPMAS) अनुरुप गर्ने ।

**२.३ आर्थिक क्षेत्र**

**२.३.१ पर्यटन**

१. तेह्रौं योजनाको आधारपत्रमा निर्दिष्ट पर्यटन क्षेत्रको नतिजा प्राप्त गर्न सहयोग पुग्ने कार्यक्रम प्रस्ताव गर्ने ।

२. प्रमुख पर्यटकीय गन्तव्य स्थलका लागि चाहिने पूवार्धार विकास गर्न सम्वन्धित बिषयगत मन्त्रालयहरूसँग समन्वय गरी स्पष्ट कार्यक्रम प्रस्ताव गर्ने ।

३. परम्परागत गन्तव्य स्थलमा सीमित पर्यटन बजार विस्तारका लागि नयाँ आकर्षक स्थलको विकास मार्फत् पर्यटन बजार प्रवर्द्धन गर्ने ।

४. चीन/भारत लगायत अन्य दक्षिण एशियाली मुलुकका पर्यटक बढी भित्र्याउने गरी कार्यक्रम प्रस्ताव गर्ने ।

५. पर्यटन प्रवर्द्धनका लागि नेपाली कूटनैतिक नियोगहरूमार्फत् सञ्चालन गर्न सकिने कार्यक्रम प्रस्ताव गर्ने ।

६. पदयात्रा, साहसिक यात्रा, जलयात्रा, Eco-tourism, धार्मिक पर्यटन तथा ग्रामीण पर्यटनलाई सहयोग पुग्ने कार्यक्रमहरू तर्जुमा गर्ने ।

**२.३.२ नागरिक उड्डयन**

१. त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको गुरूयोजना समेतलाई दृष्टिगत गरी विमानस्थलको भौतिक क्षमता तथा सुविधा विस्तार गर्ने ।

२. राष्ट्रिय गौरवका आयोजनाका रूपमा रहेका पोखरा, गौतमबुद्ध र निजगढ विमानस्थलका निर्माणलाई थप गति दिन कार्यक्रम प्रस्ताव गर्ने ।

३. दुर्गम क्षेत्रमा हवाई सेवालाई नियमित र भरपर्दो बनाउने गरी प्राथमिकताका आधारमा विमानस्थलहरूको सुदृढीकरण कार्यक्रम प्रस्ताव गर्ने ।

४. नेपाल वायुसेवा निगमको संस्थागत सुदृढीकरण र व्यवसायिक क्षमता अभिवृद्धिका लागि कार्यक्रम प्रस्ताव गर्ने ।

५. हवाई उड्डयन सुरक्षा अभिबृद्धि गर्ने आवश्यक कार्यक्रम प्रस्ताव गर्ने ।

### २.३.३ संस्कृति

१. देशको मूर्त तथा अमूर्त साँस्कृतिक सम्पदाहरूको संरक्षण, सम्बर्द्धन तथा प्रवर्द्धन गर्नको लागि देशभरिका त्यस्ता सम्पदाहरूको लगत तयार गर्नेगरी कार्यक्रममा निरन्तरता दिने ।
२. साँस्कृतिक, ऐतिहासिक र पुरातात्विक सम्पदाहरूको संरक्षण, सम्वर्द्धन व्यवस्थापन र उपयोग गर्ने कार्यमा व्यापक जनसहभागिता परिचालन हुने गरी कार्यक्रम तर्जुमा गर्ने ।
३. भाषा, साहित्य, ललितकला, संगीत, नाटक लगायतका क्षेत्रको विशिष्टीकरण गर्ने कार्यक्रम प्रस्ताव गर्ने ।
४. प्रतिलिपि अधिकारको संरक्षण र सम्बर्द्धन गर्ने कार्यक्रम तर्जुमा गर्ने ।
५. विश्व सम्पदाको सूचीमा परेका क्षेत्रलाई खतराबाट जोगाउन पुरातात्विक मापदण्ड अनुसार संरक्षण गर्ने कार्यक्रम प्रस्ताव गर्ने ।
६. सांस्कृतिक तथा ऐतिहासिक क्षेत्रको संरक्षण, सर्म्वद्धनका कार्यक्रममा स्थानीय निकाय/संघ/संस्थालाई सहभागि बनाउने गरी कार्यक्रमहरू तय गर्ने र यसरी कार्यक्रम तय गर्दा स-साना बजेट रकम विनियोजन गर्ने पद्वति हटाउने ।
७. स्थानीयतहको सहभागिता तथा समन्वयमा ऐतिहासिक, धार्मिक तथा राष्ट्रिय महत्वका क्षेत्रहरूको पुरातात्विक सर्भेक्षण, अन्वेषण तथा उत्खनन् गरिने कार्यक्रमहरू प्रस्ताव गर्ने ।
८. प्राकृतिक, साँस्कृतिक, धार्मिक, ऐतिहासिक तथा पुरातात्विक धरोहरहरूलाई पर्यटकीय आर्कषणको रूपमा विकास तथा साँस्कृतिक आदान प्रदान एवं प्रचार प्रसारका कार्यक्रमहरू प्रस्ताव गर्ने । मूलतः पुराना दरवारहरू, पाटी, पौवा, मन्दिर आदिको संरक्षण र जिर्णोद्वारमा रकम प्रस्ताव गर्ने ।
९. लुम्विनी विकास कोष, पशुपति क्षेत्र विकास कोष तथा बृहत्तर जनकपुर क्षेत्र विकास परिषद्का गुरूयोजनाहरू अनुरूप कार्यक्रमहरू प्रस्ताव गर्ने ।
१०. राज्य पूनर्संरचनाको क्षेत्रमा समावेशीकरणको सिद्धान्त वमोजिम विभिन्न जातीय संग्रहालयको पूर्वाधार विकास र राष्ट्रिय पहिचानयुक्त साँस्कृतिक विकासका समावेशीमूलक कार्यक्रमहरू तयार गर्ने ।
११. **संस्कृति नीति २०६७**, को सफल कार्यान्वयनका लागि कार्यक्रमहरू प्रस्ताव गर्ने ।




## अनुसूची १

## मध्यमकालीन खर्च संरचना (२०७१/७२-२०७३/७४) को ढाँचा

१. पृष्ठभूमि

१.१ सामान्य परिचय (General introduction)

१.२ नीति तथा कार्यक्रमको संक्षिप्त पुनरावलोकन (Brief review of policy)

१.३ प्रमुख समस्या तथा चुनौतीहरु

२. क्षेत्रगत अवधारणा (Sectoral perspective)

२.१. दीर्घकालीन सोंच (Long-term vision)

२.२. उद्देश्य (Objectives)

२.३. रणनीतिहरु (Strategies)

२.४. मध्यमकालीन खर्च संरचना (Medium Term Expenditure Framework-MTEF) अनुसारको नतिजा खाका

तालिका १

## नतिजा खाका (Result Framework)

| सि. नं. | नतिजा (Result) | सूचकहरु (Indicators) | आधार तथ्याङ्क (Baseline data) | लक्ष्यहरु (Targets) | | | | पुष्ट्याईका श्रोतहरु (Means of Verification) | कार्यान्वयन गर्ने निकाय (Implementing Agency) | मान्यता/जोखिम (Assumption/ Risk) |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | प्रभाव (Impact) | | २०६९/७० | २०७०/७१ | २०७१/७२ | २०७२/७३ | २०७३/७४ | | | |
| | असर १ (Outcome 1)<br>प्रतिफल (Output)<br>(Output 1.1)<br>(Output 1.2)<br>असर २ (Outcome 2)<br>प्रतिफल (Output)<br>Output 2.1<br>Output 2.2 | | | | | | | | | |
| | | मुख्य मुख्य कार्यक्रम/आयोजनाहरु | | | | | क्षमता/स्थिति | | | |
| | | १. .............................<br>२...............................<br>३................................ | | | | | (Output....................................)<br>(Output....................................)<br>(Output....................................) | | | |

नोटः प्रतिफल (Output) भन्नाले कार्यक्रम/आयोजनाको उद्देश्य प्राप्तिको निम्ति गरिएको लगानीबाट उत्पादन गर्ने लक्ष्य राखिएको खास उत्पादन वा सेवा ।
असर (Outcome) भन्नाले आयोजनाबाट प्राप्त भएको प्रतिफलको प्रयोग वा उपयोगको परिणामबाट देखिने परिवर्तन ।

## तालिका २ मध्यमकालीन खर्च संरचना अनुसारको अनुमानित खर्चको सारांश

| बजेट उपशिर्षक नं. | बजेट शीर्षक विवरण | २०६९/७० | | | | २०७०/७१ | | | | २०७१/७२ | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | चालू | पूंजीगत | वित्तीय व्यवस्था | जम्मा | चालू | पूंजीगत | वित्तीय व्यवस्था | जम्मा | चालू | पूंजीगत | वित्तीय व्यवस्था | जम्मा |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |

(रू. हजारमा)

| बजेट उपशिर्षक नं. | बजेट शीर्षक विवरण | २०७२/७३ | | | | २०७३/७४ | | | | प्राथमिकताक्रम | रणनीतिक स्तम्भ | गरिबीमुखि संकेत | लैङ्गिक संकेत | जलवायु परिवर्तन संकेत |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | चालू | पूंजीगत | वित्तीय व्यवस्था | जम्मा | चालू | पूंजीगत | वित्तीय व्यवस्था | जम्मा | | | | | |
| | | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | | |



